॥ श्री गणेशाय नमः ॥
ॐ
श्री परमात्मने नमः
# ॥ अथ आपस्तम्बस्मृतिः ॥

## ॥ अथ प्रथमोऽध्यायः ॥
## (पहिलो अध्याय)

आपस्तम्बं प्रवक्ष्यामि प्रायश्चित्तविनिर्णयम् ।
दूषितानां हितार्थाय वर्णानामनुपूर्वशः ॥१॥

वर्णका क्रमागत दोषले लिप्त मानिसको हितका लागि आपस्तम्ब ऋषिले बताएका प्रायश्चितका निर्णयका विषयमा वर्णन गर्दछु ।

परेषां परवादेषु निवृत्तमृषिसत्तमम् ।
विविक्तदेश आसीनमात्मविद्यापरायणम् ॥२॥
अनन्यमनसं शान्तं तत्त्वस्थं योगवित्तमम् ।
आपस्तम्बमृषिं सर्वे समेत्य मुनयोऽब्रुवन् ॥३॥

परनिन्दाबाट टाढा रहेका, ऋषिहरूमा उत्तम, एकान्तमा बसिरहेका, आत्मविद्यामा परायण, एकाग्रचित्त, शान्त र योगिहरूमा श्रेष्ठ आपस्तम्ब मुनिसमक्ष गएर सब मुनिहरू भन्दछन् ।

भगवन् ! मानवाः सर्वेऽसन्मार्गेऽपि स्थिता यदा ।
चरेयुधर्मकार्याणां तेषां ब्रूहि विनिष्कृतिम् ॥४॥

हे भगवान् ! जब सबै मानिसहरु गलत बाटोमा हिँडिरहेका हुन्छन् तर धर्मकर्म गर्न चाहन्छन् भने तिनले गर्ने प्रायश्चितको विधि बताउनु होस् ।

यतोऽवश्यं गृहस्थेन गवादिपरिपालनम् ।
कृषिकर्मादि वपनं द्विजामन्त्रणमेव च ॥५॥
बालानां स्तन्यपानादिकार्यञ्च परिपालनम् ।
देयञ्चानाथकेऽवश्यं विप्रादीनाञ्च भेषजम् ॥६॥
एवं कृते कथञ्चित् स्यात् प्रमादो यद्यकामतः ।
गवादीनां ततोऽस्माकं भगवन् ! ब्रूहि निष्कृतिम् ॥७॥

गृहस्थले गाई आदि पाल्नु पर्ने हुन्छ, कृषि कर्म गर्नु पर्ने हुन्छ, ब्राह्मणलाई खाना खान बोलाउनु पर्ने हुन्छ, बच्चाबच्चीलाई दूध चुसाउन र पालनपोषण गर्नुपर्ने हुन्छ, असहायलाई अवश्य नै (सक्दो) दिनुपर्ने हुन्छ, ब्राह्मण आदिको औषधीमूलो गर्नुपर्ने हुन्छ, यि सब गरिरहँदा, नचाहँदा नचाहँदै पनि गाई आदिका विषयमा केही भूलचूक हुन पुगेमा हे भगवान्! त्यसको प्रायश्चित विधि पनि हामीलाई बताउनु होस्।

**एवमुक्तः क्षणं ध्यात्वा प्रणिपातादधोमुखः ।**
**दृष्ट्वा ऋषीनुवाचेदमापस्तम्बः सुनिश्चितम्॥८॥**

यसरी सोधिएका अभिवादनका कारण निहुरिएका आपस्तम्बले एकछिन विचार गरी ऋषिहरूलाई हेरी यी सुनिश्चित वचनहरू भन्नु भयो ।

**बालानां स्तन्यपानादिकार्ये दोषे न विद्यते ।**
**विपत्तावपि विप्राणामामन्त्रणचिकित्सने॥९॥**

बालकलाई दूध पियाउने आदि काम गर्दा र ब्राह्मणलाई निम्ता तथा उपचार आदि गर्दा कुनै विपत्ति आए दोष लाग्दैन ।

**गवादीनां प्रवक्ष्यामि प्रायश्चित्तं तृणादिषु ।**
**केचिदाहुर्न दोषोऽत्र स्नेहे लवणभेषजे॥१०॥**

गाईको घाँसादि खाँदा मृत्यु हुँदाको प्रायश्चित भन्दछु । कोही भन्छन् घिउ, तेल, नुन र औषधी दिँदा कुनै दुर्घटना भए दोष लाग्दैन ।

**औषधं लवणश्चैव स्नेहपुष्ट्यन्नभोजनम् ।**
**प्राणिनां प्राणवृत्त्यर्थं प्रायश्चित्तं न विद्यते॥११॥**

औषधी, नुन, घिउ-तेल आदि चिल्लो पदार्थ, पौष्टिक अन्न र भोजन प्राणीको प्राण रक्षाको लागि हो । अतः प्रायश्चित गर्नु पर्दैन ।

**अतिरिक्तं न दातव्यं काले स्वल्पन्तु दापयेत् ।**
**अतिरिक्ते विपन्नानां कृच्छ्रमेव विधीयते॥१२॥**

चाहिने भन्दा बढी दिनु हुँदैन, उचित समयमा थोरै दिनु पर्दछ । बढी दिएर मरेमा त त्यो अवस्थामा कृच्छ्र व्रतगर्नु पर्ने विधान छ ।

**त्र्यहं निरशनात् पादः पादश्चायाचितं त्र्यहम् ।**
**सायं त्र्यहं तथा पादः पादः प्रातस्तथा त्र्यहम्॥१३॥**

तीन दिन खाना नखाए, तीन दिन नमागी भेटिएको खाए, तीन दिन बिहान मात्र खाए तथा तीन दिन बेलुकी मात्र खाए एक चौथाई कृच्छ्र हुन्छ ।

**प्रातः सायं दिनार्द्धञ्च पादोनं सायवर्ज्जितम् ॥१४॥**

बिहान र बेलुकी नखानुलाई आधा दिनको कृच्छ्र र बेलुकीलाई छाडेर दिनमा एक पटक खानुलाई पादोन (पौने) कृच्छ्र भनिन्छ ।

**प्रातः पादं चरेच्छूद्रः सायं वैश्यस्य दापयेत् ।**
**अयाचितन्तु राजन्ये त्रिरात्रं ब्राह्मणस्य च ॥१५॥**

शूद्रले प्रातः पादकृच्छ्र, वैश्यले सन्ध्या पादकृच्छ्र, क्षत्रियले भेटिएको खाने पादकृच्छ्र र ब्राह्मणले तीन दिन नखाने पादकृच्छ्र व्रत गर्नू ।

**पादमेकं चरद्रोधे द्वौ पादौ बन्धने चरेत् ।**
**योजने पादहीनञ्च चरेत् सर्वं निपातने ॥१६॥**

गाई आदि रोक्दा विपत्तिमा परे एक चौथाई, बाँध्नाले विपत्तिमा परे अर्द्ध, गाई आदि जोतेर विपत्तिमा परे पौने र गाई आदि लडाएर विपत्तिमा परे सम्पूर्ण कृच्छ्र गर्नू ।

**घण्टाभरणदोषेण गौस्तु यत्र विपद्यते ।**
**चरेदर्द्धव्रतं तत्र भूषणार्थं कृतं हि तत् ॥१७॥**

घण्टी लगाएका कारण गाईलाई विपत्ति भए अर्द्ध कृच्छ्र व्रत गर्नू, किनकि त्यो आभूषणका लागि लगाइएको हो ।

**दमने वा निरोधे वा संघाते चैव योजने ।**
**स्तम्भश्रृङ्खलपाशैश्चमृते पादोनमाचरेत् ॥१८॥**

गाईआदि-तह लगाउँदा वा रोक्दा वा जम्मा पार्दा वा जोत्दा मरे पौने कृच्छ्र व्रत गर्नू । साङ्लो वा डोरीले किलामा बाँध्दा मरे पौने कृच्छ्र गर्नू ।

**पाषाणैर्लगुडैर्वापि शस्त्रेणान्येन वा बलात् ।**
**निपातयन्ति ये पापास्तेषां सर्वं विधीयते ॥१९॥**

ढुङ्गा वा लाठोले वा कुनै हतियारले जो पापी बलपूर्वक लडाएर गाई मार्दछ उसका लागि पूर्ण कृच्छ्र गर्ने विधान छ ।

**प्राजापत्यं चरेद्विप्रः पादोनं क्षत्रियश्चरेत् ।**
**कृछ्रार्द्धन्तु चरेद्वैश्यः पादं शूद्रस्य दापयेत् ॥२०॥**

ब्राह्मणलाई प्राजापत्य, क्षत्रियलाई पादोन प्राजापत्य, वैश्यलाई अर्द्धकृच्छ्र र शूद्रलाई चौथाई कृच्छ्र गराउनू ।

**द्वौ मासौ पाययेद् वत्सं द्वौ मासौ द्वौ स्तनौ दुहेत् ।**
**द्वौ मासावेकवेलायां शेषकाले यथारुचि ॥२१॥**

गाईको दूध दुई महिनासम्म बाछोलाई खुवाउनू, दुई महिना दुई थुन दुहुनू, दुई महिना एक पटक दुहुनू र त्यसपछि रुचि अनुसार दुहुनू ।

**दशरात्रार्द्धमासेन गौस्तु यत्र विपद्यते ।**
**सशिखं वपनं कृत्वा प्राजापत्यं समाचरेत् ॥२२॥**

बिहाएको दशदेखि पन्ध्रदिनभित्र गाई मरेमा टुपी सहित कपाल खौरेर प्राजापत्य व्रत गर्नू ।

**हलमष्टगवं धर्म्यं षड्गवं जीवितार्थिनाम् ।**
**चतुर्गवं नृशंसानां द्विगवं हि जिघांसिनाम् ॥२३॥**

आठ वटा बहरको जोताई धर्मको, पाँच वटाको जीवन चाहनेको, चार वटाको दयाहीनको र दुई वटाको जोताई बहर मार्नेको हुन्छ ।

**अतिवाहातिदोहाभ्यां नासिकाभेदेन तथा ।**
**नदीपर्वतसंरोधे मृते पादोनमाचरेत् ॥२४॥**

साँढे धेरै बोझ तान्न लगाएका कारण मरेमा, गाई धेरै दोहेका कारण मरेमा, गाईवस्तु नाथ्री छेडेका कारण मरेमा वा कतैबाट लेराउँदा वा कतै लैजाँदा नदी-पर्वतमा फँसेर मरेमा पौने कृच्छ्र गर्नू ।

**न नारिकेलबालाभ्यां न मुञ्जेन न चर्म्मणा ।**
**एभिर्गास्तु न बध्नीयाद् बद्ध्वा परवशो भवेत् ॥२५॥**

नरिवलको जटा तथा मूँज (घाँस विशेष) र छालाको डोरीले गाईगोरु नबाँध्नू, बाँधे पशु अर्काको वशमा हुन्छन् ।

**कुशैः काशैश्चबध्नीयाद् वृषभं दक्षिणामुखम् ।**
**पाददग्नाहिदाहेषु प्रायश्चित्तं न विद्यते ॥२६॥**

साँढेलाई कुश वा काँसको डोरीले दक्षिणतिर मुख फर्कने गरी बाँध्नू । खुट्टा अल्झिएर, सर्पले टोकेर वा (डँडेलोमा परी) जलेर पशु मर्दा प्रायश्चित गर्नु पर्दैन ।

**व्यापन्नानां बहूनान्तु रोधने बन्धनेऽपि च ।**
**भिषङ्मिथ्योपचारे च द्विगुणं गोव्रतञ्चरेत् ॥२७॥**

थुनेर, बाँधेर धेरै पशु मरेमा तथा वैद्यले गलत उपचार गर्नाले हुने दुर्घटनामा गोहत्याको दोब्बर व्रत गर्नू ।

**शृङ्गभङ्गेऽस्थिभङ्गे च लाङ्गूलस्य च कर्त्तने ।**
**सप्तरात्रं पिबेद् वज्रं यावत् स्वस्था पुनर्भवेत् ॥२८॥**

सिङ भाँचिए, हाड भाँचिए तथा पुच्छर काटिए सात रातसम्म वज्र खानू, जबसम्म त्यो फेरी स्वस्थ हुँदैन.. ।

**गोमूत्रेण तु संमिश्रं यावकं भक्षयेद् द्विजः ।**
**एतद्विमिश्रितं वज्रमुक्तञ्चोशनसा स्वयम् ॥२९॥**

द्विजले गहुँतले मुछेर जौ (सातु) खानू । यो मिश्रणलाई उशना ऋषि स्वयंले “वज्र” भनी बताएका छन् ।

**देवद्रोण्यां विहारेषु कूपेष्वायतनेषु च ।**
**एषु गोषु विपन्नासु प्रायश्चित्तं न विद्यते ॥३०॥**

देवतीर्थमा, विहारमा, कुवा र गोठमा गाई मर्दा प्रायश्चित गर्नु पर्दैन ।

**एका यदा तु बहुभिर्दैवाद् व्यापादिता क्वचित् ।**
**पादं पादन्तु हत्यायाश्चरेयुस्ते पृथक् पृथक् ॥३१॥**

यदि दुर्भाग्यपूर्ण तरिकाले धेरैले मिलेर एउटा गाई मारे ती सबैले छुट्टाछुट्टै एक-एक चौथाई गोहत्याको प्रायश्चित गर्नू ।

**यन्त्रणा गोश्चिकित्सार्थे मूढगर्भविमोचने ।**
**यत्ने कृते विपत्तिश्चेत् प्रायश्चित्तं न विद्यते ॥३२॥**

गाईको औषधीका लागि अँचेट्ने वा मरेको गर्भ बाहिर निकाल्ने प्रयाश गर्दा दुर्घटना भए प्रायश्चित गर्नु पर्दैन ।

**सरोमं प्रथमे पादे द्वितीये श्मश्रुधारणम् ।**

**तृतीये तु शिखा धार्य्या सशिखन्तु निपातने ॥३३॥**

प्रायश्चितको प्रथम पादमा रौंमुण्डन, द्वितीय पादमा दाऱ्ही बाहेक सबै खौरने, तृतीय पादमा टुपी बाहेक सबै खौरने र मर्दा टुपी सहित सबै खौरने विधान छ ।

**सर्व्वान् केशान् समुद्धृत्य छेदयेदङ्गुलिद्वयम् ।**
**एवमेव तु नारीणां शिरसो मुण्डनं स्मृतम् ॥३४॥**

सबै कपाल माथि उठाई दुई अङ्गुल कटाउनू । यसरी नारीको सिर मुण्डन मानिएको छ ।

॥ इत्यापस्तम्बीये धर्मशास्त्रे प्रथमोऽध्यायः ॥१॥
॥ आपस्तम्बीय धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
गरिएको भावानुवादको पहिलो अध्याय सकिएको छ ॥१॥



आदितः श्लोकानां समष्टयङ्काः-०+३४=३४
शुरुदेखिका श्लोक सङ्ख्या : ३४



## ॥ अथ द्वितीयोऽध्यायः ॥
## (दोश्रो अध्याय)

**कारुहस्तगतं पुण्यं यच्च ग्रामाद्विननिःसृतम् ।**
**स्त्रीबालवृद्धचरितं सर्वमेतच्छुचि स्मृतम् ॥१॥**

कालिगढका हातका वस्तु पवित्र हुन्छ, गाऊँ बाहिरबाट लेराइएको वस्तु तथा स्त्री, बालक र वृद्धको आचरण : यी सबै कुरा पवित्र मानिएका छन् ।

**प्रपास्वारण्येषु जलेषु गिरौ द्रोण्यां जलं च केशविनिःसृतं ।**
**श्वपाकचाण्डालपरिग्रहेषु पीत्वा जल पञ्चगव्येन शुद्धिः ॥२॥**

जलशाला-बन-पर्वत-भाँडाको, कपालबाट चुहिएको, श्वपाक र चाण्डालका घरको जल पिएमा पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**न दुष्येत् सन्तता धारा वातोद्धूताश्च रेणवः ।**
**स्त्रियो वृद्धाश्च बालाश्च न दुष्यन्ति कदाचन ॥३॥**

निरन्तर बगिरहने जलको धारा, हावाले उडाएको धूलो, स्त्री, वृद्ध र बालक कहिल्यै अपवित्र हुँदैन ।

**आत्मशय्या च वस्त्रञ्च जायापत्यं कमण्डलुः ।**
**आत्मनः शुचिरेतानि परेषामशुचीनि तु ॥४॥**

ओछ्यान, लुगा, पत्नी र कमण्डलु आफ्नो शुद्ध हुन्छ अर्काको अशुद्ध हुन्छ ।

**अन्यैस्तु खानिताः कूपास्तडागानि तथैव च ।**
**एषु स्नात्वा च पित्वा च पञ्चगव्येन शुध्यति ॥५॥**

अर्काले बनाउन लगाएको कुवा र तालको पानी पिए, मानिस पञ्चगव्यले शुद्ध हुन्छ ।

**उच्छिष्टमशुचित्वञ्च यच्च विष्ठानुलेपनम् ।**
**सर्वं शुध्यति तोयेन तत्तोयं केन शुध्यति ॥६॥**

छुन नहुने भनिएका मानिस वा पशुपंक्षीले छोएर भएको, अपवित्रता र मलले लिपिएका आदि सबैको शुद्धि जलले हुन्छ भने जल के गर्दा शुद्ध हुन्छ (त्यो बताउँछु) ।

**सूर्य्यरश्मिनिपातेन मारुतस्पर्शनेन च ।**
**गवां मूत्रपुरीषेण तत्तोयं तेन शुध्यति ॥७॥**

सूर्यको किरण परेर, हावाको स्पर्शले पनि तथा गहुँत वा गोबरले पानी शुद्ध हुन्छ ।

**अस्थिचर्म्मादियुक्तन्तु खराश्वोष्ट्रोपदूषितम् ।**
**उद्धरेदुदकं सर्व्वं शोधनं परिमार्जनम् ॥८॥**

हाड, छाला आदि परेर वा गधा, घोडा, ऊँट आदिद्वारा दूषित गरिएको पानि फ्याँकेर सफा गर्नाले शुद्ध हुन्छ ।

**कूपो मूत्रपुरीषेण ष्ठीवनेनापि दूषितः ।**
**श्वश्रृगालखरोष्ट्रैश्च क्रव्यादैश्च जुगुप्सितः ॥९॥**
**उद्धृत्यैव च तत्तोयं सप्तपिण्डान् समुद्धरेत् ।**
**पञ्चगव्यं मृदा पूतं कूपे तच्छोधनं स्मृतम् ॥१०॥**

पानीको कुवा यदि मलमूत्र वा थुक पारेर अपवित्र तथा कुकुर, स्याल, गधा, ऊँट तथा मांसाहारी जनावरले घिनलाग्दो बनाएका छन् भने त्यस्तो कुवाको पानी निकालेर सात वटा माटाका डल्ला निकाल्नू, पञ्चगव्य हाली माटोले पोत्नाले पवित्र हुन्छ । कुवाका यही पवित्रताको तरिका बताइएको छ ।

**वापीकूपतडागानां दूषितानाञ्च शोधनम् ।**
**कुम्भानां शतमुद्धृत्य पञ्चगव्यं ततः क्षिपेत् ॥११॥**

दूषित भएका पोखरी, कुवा तथा तलाउलाई शुद्ध बनाउन त्यसबाट सय गाग्री पानी निकाली त्यसपछि पञ्चगव्य हाल्नू ।

**अक्लिन्नेनाप्यभिन्नेन शवेन परिदूषिते ।**
**पीत्वा कूपे ह्यहोरात्रं पञ्चगव्येन शुध्यति ॥१३॥**

रगतले नभिजेको र (ढाडिएर) नफुटेको लाश परेर प्रदुषित भएको कुवाको पानी पिएमा एकदिन एकरातसम्म पञ्चगव्य खाएर ब्राह्मण शुद्ध हुन्छ ।

**क्लिन्ने भिन्ने शवे चैव तत्रस्थं यदि तत् पिबेत् ।**
**शुद्धिश्चान्द्रायणं तस्य तप्तकृच्छ्रमथापि वा ॥१४॥**

रगतले भिजेको र फुटेको लाशका कारण प्रदुषित कुवाको पानी पिएमा चान्द्रायण वा तप्तकृच्छ्र व्रतले ब्राह्मण शुद्ध हुन्छ ।

॥ इत्यापस्तम्बीये धर्मशास्त्रे द्वितीयोऽध्यायः ॥२॥
॥ आपस्तम्बीय धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवादको दोश्रो अध्याय सकिएको छ ॥२॥



आदितः श्लोकानां समष्ट्यङ्काः-३४+१४=४८
शुरुदेखिका श्लोक सङ्ख्या : ४८



## ॥ अथ तृतीयोऽध्यायः ॥
## (तेश्रो अध्याय)

**अन्त्यजातिरविज्ञातो निवसेद्यस्य वेश्मनि ।**
**तस्य ज्ञात्वा तु कालेन द्विजाः कुर्वन्त्यनुग्रहम् ॥१॥**

थाहा नपाइकन कुनै शूद्र द्विजको घरमा आएर बासबसेको रहेछ र पछि थाहा पाइयो भने द्विजले उसमाथि दया गर्दछन् ।

**चान्द्रायणं पराको वा द्विजातीनां  वशोधनम् ।**
**प्राजापत्यन्तु शूद्रस्य शेषं तदनुसारतः ॥२॥**

चान्द्रायण र पराक व्रतले द्विजलाई शुद्ध बनाउँदछ भने प्राजापत्य व्रतले शूद्रलाई । बाँकी सबै त्यसमा बताइए अनुसार नै हुन्छ ।

**यैर्भुक्तं तत्र पक्वान्नं कृच्छ्रं तेषां प्रदापयेत् ।**
**तेषामपि च यैर्भुक्तं कृच्छ्रपादं प्रदापयेत्॥३॥**

त्यो घरमा तिनले पकाएको अन्न खाए तिनलाई कृच्छ्र गराउनू । यसरी खानेका घरमा गएर खानेलाई पादकृच्छ्र गराउनू ।

**कूपैकपानैर्दुष्टानां स्पर्शसंसर्गदूषणात् ।**
**तेषामेकोपवासेन पञ्चगव्येन शोधनम्॥४॥**

अन्त्यजसँगको स्पर्श, संसर्ग र एउटै कुवाको पानी पिउनाले अपवित्र भएकाहरूको शुद्धि एक रात्र उपवास बसी पञ्चगव्य खानाले हुन्छ ।

**बालो वृद्धस्तथा रोगी गर्भिणी वायुपीडिता ।**
**तेषां नक्तं प्रदातव्यं बालानां प्रहरद्वयम्॥५॥**

बालक, वृद्ध, रोगी तथा वायुले पिडित गर्भिणी स्त्री भए तिनलाई रातको व्रत गराउनू । बालकलाई दोपहरको व्रत नै गराउनू ।

**अशीतिर्यस्य वर्षाणि बालोवाप्यूनषोडशः ।**
**प्रायश्चित्तार्द्धमर्हन्ति स्त्रियो व्याधित एव च॥६॥**

असी वर्ष (माथिका)का वृद्ध र सोह्र वर्ष मुनिका वालक तथा स्त्री र रोगी मानिसहरु आधा प्रायश्चितका अधिकारी हुन्छन् ।

**न्यूनैकादशवर्षस्य पञ्चवर्षाधिकस्य च ।**
**चरेद् गुरुः सुहृद् वापि प्रायश्चित्तं विशोधनम्॥७॥**

एघार वर्ष मुनिका र पाँच वर्ष माथिका वालकका लागि ठूला वा हितकारी व्यक्तिले शुद्धिको प्रायश्चित गरि दिनू ।

**अथैतेः क्रियमाणेषु येषामार्त्तिः प्रदृश्यते ।**
**शेषसम्पादनाच्छुद्धिर्विपत्तिर्न भवेद्यथा॥८॥**

यदि बालकले नै प्रायश्चित गर्दछ र सो गर्ने क्रममा उसलाई कष्ट भएको देखिए, सो नहोस् भनी बाँकी प्रायश्चित ठूला व्यक्तिले गर्नाले (पनि) शुद्धि हुन्छ ।

**क्षुधा व्याधितकायानां प्राणो येषां विपद्यते ।**
**ये न रक्षन्ति वक्तारस्तेषां तत्किल्विषं भवेत् ॥९॥**

भोक र रोगले पीडित शरीर हुनेहरुको ज्यान जाने अवस्था आउँदा पनि व्रतको उपदेश दिने व्यक्ति तिनको रक्षाको उपाय गर्दैन भने तिनले गरेको पाप उसैलाई लाग्दछ ।

**पूर्णेऽपि कालनियमे न शुद्धिर्ब्राह्मणैर्विना ।**
**अपूर्णेष्वपि कालेषु शोधयन्ति द्विजोत्तमाः ॥१०॥**

प्रायश्चितको अवधि सकिए पछि पनि ब्राह्मण नभई शुद्धि हुँदैन । समय नसकिए पनि उत्तम ब्राह्मणले तिनलाई शुद्ध गराइ दिन्छन् ।

**समाप्तमिति नो वाच्यं त्रिषु वर्णेषु कर्हिचित् ।**
**विप्रसम्पादनं कर्म उत्पन्ने प्राणसंशये ॥११॥**

प्राणको सन्देह उत्पन्न हुँदा पनि कर्म ब्राह्मणबाटै गराइन्छ, यसैले द्विजका सम्बन्धमा कहिल्यै कसैले कर्म समाप्त भयो नभन्नू ।

**सम्पादयन्ति यद् विप्राः स्नानं तीर्थफलप्रदम् ।**
**सम्यक् कर्त्तुरपापं स्याद् व्रती च फलमाप्नुयात् ॥१२॥**

ब्राह्मण एउटाले गर्नुपर्ने तीर्थस्नानको फल दिने स्नानआदि कर्मलाई अरु कसैबाट सम्पन्न गराउँछ भने पनि राम्ररी गर्नेलाई पाप लाग्दैन र व्रतालुलाई फल प्राप्त हुन्छ ।

॥ इत्यापस्तम्बीये धर्मशास्त्रे तृतीयोऽध्यायः ॥३॥
॥ आपस्तम्बीय धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
गरिएको भावानुवादको तेश्रो अध्याय सकिएको छ ॥३॥



आदितः श्लोकानां समष्टयङ्काः-४८+१२=६०
शुरुदेखिका श्लोक सङ्ख्या : ६०



## ॥ अथ चतुर्थोऽध्यायः ॥
## (चौथो अध्याय)

**चाण्डालकूपभाण्डेषु योऽज्ञानात् पिबते जलम् ।**

**प्रायश्चित्तं कथं तस्य वर्णे वर्णे विधीयते ॥१॥**

अन्त्यजका कुवाको र भाँडाको पानी अनजानमा पिउनेहरुले वर्ण अनुसार के प्रायश्चित गर्नु पर्दछ त्यसको विधि बताइन्छ ।

**चरेत् सान्तपनं विप्रः प्राजापत्यन्तु भूमिपः ।**
**तदर्द्धन्तु चरेद्वैश्यः पादं शूद्रस्य दापयेत् ॥२॥**

ब्राह्मणले सान्तपन, क्षत्रियले प्राजापत्य, वैश्यले अर्द्ध-प्राजापत्य र शूद्रले पाद-प्राजापत्य गरी प्रायश्चित गर्नू ।

**भुक्त्वोच्छिष्टस्त्वनाचान्तश्चाण्डालैः श्वपचेन वा ।**
**प्रमादात् स्पर्शनं गच्छेत्तत्र कुर्याद् विशोधनम् ॥३॥**

खाना खाएर नचुठी जुठै आचमन नगरी चाण्डाल र श्वपचलाई जानाजान छुन पुगिए त्यसबेलामा शुद्धि गर्नु पर्दछ ।

**गायत्र्यष्टसहस्रन्तु द्रुपदां वा शतं जपेत् ।**
**जपंस्त्रिरात्रमनश्नन् पञ्चगव्येन शुध्यति ॥४॥**

आठ हजार पटक गायत्री वा सय पटक द्रुपद (द्रुपदादिव मुमुचानः..) मन्त्र जप्नू । तीन रातसम्म जप्दै उपवास बस्दै पञ्चगव्य पिउनाले शुद्ध हुन्छ ।

**चाण्डालेन यदा स्पृष्टो विण्मूत्रं च कृते द्विजः ।**
**प्रायश्चित्तं त्रिरात्रं स्याद् भुक्त्वोच्छिष्टः षडाचरेत् ॥५॥**

मलमूत्र त्याग गर्दा ब्राह्मण चाण्डालबाट छोइए तीन रातको प्रायश्चित हुन्छ । खाना खाँदा जुठै छोइए छ रातको प्रायश्चित गर्नू ।

**पानमैथुनसम्पर्के तथा मूत्रपुरीषयोः ।**
**सम्पर्कं यदि गच्छेत्तु उदक्या चान्त्यजैस्तथा ॥६॥**
**एतैरेव यदा स्पृष्टः प्रायश्चित्तं कथं भवेत् ।**
**भोजने च त्रिरात्रं स्यात् पाने तु त्र्यहमेव च ॥७॥**
**मैथुने पादकृच्छ्रं स्यात्तथा मूत्रपुरीषयोः ।**
**दिनमेकं तथा मूत्रे पुरीषे तु दिनत्रयम् ॥८॥**
**एकाहं तत्र निर्दिष्टं दन्तधावनभक्षणे ।**
**वृक्षारूढे तु चाण्डाले द्विजस्तत्रैव तिष्ठति ॥९॥**

जलपान, मैथुन तथा मलमूत्र त्याग गर्दा रजस्वला वा अन्त्यजसँग सम्पर्क भए वा यिनले छोए प्रायश्चित कसरी हुन्छ ? । भोजनमा गरे तीन रातको, जलपानमा गरे तीन दिनको व्रत र संभोग गरे पादकृच्छ्र व्रत गर्नु पर्दछ । यसैगरी मलमूत्र गर्ने सम्बन्धमा मूत्र त्याग गरे एक दिनको उपवास र दिसा गर्दा गरे तीन दिनको उपवास गर्नू । त्यस्तै दतिवन गर्दा गरे एक दिनको उपवास गर्नू । चाण्डाल रुखमा चढेको छ अनि द्विज पनि त्यही रुखमा बसेको छ र..।

**फलानि भक्षयंस्तस्य कथं शुद्धिर्विनिर्दिशेत् ।**
**ब्राह्मणान् समनुज्ञाप्य सवासाः स्नानमाचरेत् ॥**
**एकरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥१०॥**

फल खाइरहेको छ भने त्यसको शुद्धि कसरी हुन्छ ? (उसलाई यसो भन्नू) । ब्राह्मणले आफ्नो दोष बताएर सवस्त्र नुहाउनू । अनि एकरात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**येन केनचिदुच्छिष्टो ह्यमेध्यं स्पृहति द्विजः ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥११॥**

खान हुने जेसुकै खाँदा जुठै अवस्थामा रहेको ब्राह्मण कुनै अपवित्र कुरालाई छुन्छ भने एक रात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

॥ इत्यापस्तम्बीये धर्मशास्त्रे चतुर्थोऽध्यायः ॥४॥
॥ आपस्तम्बीय धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
गरिएको भावानुवादको चौथो अध्याय सकिएको छ ॥४॥



आदितः श्लोकानां समष्ट्यङ्काः-६०+११=७१
शुरुदेखिका श्लोक सङ्ख्या : ७१

## ॥ अथ पञ्चमोऽध्यायः ॥

**चाण्डालेन यदा स्पृष्टो द्विजवर्णः कदाचन ।**
**अनभ्युक्ष्य पिबेत्तोयं प्रायश्चित्तं कथं भवेत् ॥१॥**

जुनसुकै बेला द्विज चाण्डालले छोइँदा ननुहाई पानी पिए प्रायश्चित के गरी हुन्छ (त्यो बताउँदछु) ।

**ब्राह्मणस्तु त्रिरात्रेण पञ्चगव्येन शुध्यति ।**
**क्षत्रियस्तु द्विरात्रेण पञ्चगव्येन शुध्यति ॥**

**अहोरात्रं तु वैश्यस्य पञ्चगव्येन शुध्यति ॥२॥**

ब्राह्मण तीन रातमा पञ्चगव्यले शुद्ध हुन्छ । क्षत्रिय दुई रातमा पञ्चगव्यले शुद्ध हुन्छ । वैश्य एक दिन र एकरातको प्रायश्चित पछि पञ्चगव्यले शुद्ध हुन्छ ।

**चतुर्थस्य तु वर्णस्य प्रायश्चित्तं न वै भवेत् ।**
**व्रतं नास्ति तपो नास्ति होमो नैव च विद्यते ॥३॥**

चौथो वर्णको प्रायश्चित हुँदैन, न व्रत हुन्छ, न तप हुन्छ तथा न होम नै हुन्छ ।

**पञ्चगव्यं न दातव्यं तस्य मन्त्रविवर्जनात् ।**
**ख्यापयित्वा द्विजानान्तु शूद्रो दानेन शुध्यति ॥४॥**

मन्त्रहीन हुने कारणले गर्दा उसलाई पञ्चगव्य नदिनू । ब्राह्मणका सामु दोष कबुल गरी दान गर्नाले शूद्र शुद्ध हुन्छ ।

**ब्राह्मणस्य यदोच्छिष्टमश्नात्यज्ञानतो द्विजः ।**
**अहोरात्रन्तु गायत्र्या जपं कृत्वा विशुध्यति ॥५॥**

जब कुनै द्विज थाहा नपाई ब्राह्मणको जुठो खान्छ तब एक दिनरात गायत्री जप गरी राम्ररी शुद्ध हुन्छ ।

**उच्छिष्टं वैश्यजातीनां भुङ्क्तेज्ञानात् द्विजो यदि ।**
**शङ्खपुष्पीपयः पीत्वा त्रिरात्रेणैव शुध्यति ॥६॥**

जब कुनै द्विज थाहा नपाई वैश्यजातीको जुठो खान्छ तब शङ्खपुष्पीको जल पिए तीन रातमा नै शुद्ध हुन्छ ।

**ब्राह्मण्या सह योऽश्नीयादुच्छिष्टं वा कदाचन ।**
**न तत्र दोषं मन्यन्ते नित्यमेव मनीषिणः ॥७॥**

कहिलेकाहिँ ब्राह्मणीका साथ उनको जुठो खाने ब्राह्मणलाई विद्वानहरु कहिल्यै दोषी मान्दैनन् ।

**उच्छिष्टमितरस्त्रीणामश्नीयात् स्पृशतेऽपिवा ।**
**प्राजापत्येन शुद्धिःस्याद्भगवान- ङ्गिराब्रवीत् ॥८॥**

अन्य स्त्रीको जुठो खाए वा तिनलाई छोएमात्र पनि ब्राह्मणले प्राजापत्य व्रत गरी शुद्ध हुन्छ भनी अङ्गिरा ऋषिले भनेका छन् ।

**अन्त्यानां भुक्तशेषन्तु भक्षयित्वा द्विजातयः ।**

**चान्द्रायणं तदर्द्धार्द्धं ब्रह्मक्षत्त्रविशां विधिः ॥९॥**

शूद्रले खाएर बचेको जुठो खाने द्विजले क्रमशः कृच्छ्र, अर्द्धकृच्छ्र र पादकृच्छ्र व्रत गर्नु भनी बताइएको छ ।

**विण्मूत्रभक्षणे विप्रस्तप्तकृच्छ्रं समाचरेत् ।**
**श्वकाकोच्छिष्टभोगे च प्राजापत्यविधिः स्मृतः ॥१०॥**

मलमूत्र खाने विप्रले तप्तकृच्छ्र व्रत गर्नू । कुकुर र कौवाको जुठो खाए प्राजापत्य व्रतको विधान छ ।

**उच्छिष्टः स्पृशते विप्रो यदि कश्चिदकामतः ।**
**शुनः कुक्कुटशूद्रांश्च मद्यभाण्डं तथैव च ॥११॥**
**पक्षिणाधिष्ठितं यच्च यदमेध्यं कदाचन ।**
**अहोरात्रेषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥१२॥**

जुठो मुखको ब्राह्मणले नचाहँदा नचाहँदै कुकुर, कुखुरा, शूद्, चराको वासस्थान र अपवित्र वस्तु छोए दिनरात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**वैश्येन च यदा स्पृष्टः उच्छिष्टेन कदाचन ।**
**स्नानं जपश्च त्रैकाल्यं दिनस्यान्ते विशुध्यति ॥१३॥**

ब्राह्मणलाई केहिगरी जुठो मुखको वैश्यले छोए तीन काल स्नान र जप गरी दिनको अन्तमा शुद्ध हुन्छ ।

**विप्रो विप्रेण संस्पृष्ट उच्छिष्टेन कदाचन ।**
**स्नात्वाचम्य विशुद्धःस्यादापस्तम्बोब्रवीन्मुनिः ॥१४॥**

कुनै समय जुठो मुखको ब्राह्मणले छोइएको ब्राह्मणले स्नान र आचमन गरी शुद्ध हुन्छ भनी आपस्तम्ब मुनिले भनेका छन् ।

॥ इत्यापस्तम्बीये धर्मशास्त्रे पञ्चमोऽध्यायः ॥५॥
॥ आपस्तम्बीय धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
गरिएको भावानुवादको पाँचौं अध्याय सकिएको छ ॥५॥



आदितः श्लोकानां समष्ट्यङ्काः-७१+१४=८५
शुरुदेखिका श्लोक सङ्ख्या : ८५



## ॥ अथ षष्ठोऽध्यायः ॥
## (छैटौं अध्याय)

**अत ऊद्ध्र्वं प्रवक्ष्यामि नीलीवस्त्रस्य यो विधिः ।**
**स्त्रीणां क्रीडार्थसम्भोगे शयनीये न दुष्यति ॥१॥**

यस पछि नीलो कपडाको विधिको बारेमा वर्णन गर्दछु । स्त्रीका साथ क्रिडाको लागि सम्भोग गर्दा र बिछचौनामा (हालिएको) नीलो कपडाको कुनै दोष छैन ।

**पालने विक्रये चैव तद्वृत्तेरुपजीवने ।**
**पतितस्तु भवेद्विप्रस्त्रिभिः कृच्छ्रैर्विशुध्यति ॥२॥**

नीरको खेती गर्नाले, बेचबिखन गर्नाले वा यसको पेशाले जीवन चलाउनाले ब्राह्मण पतित हुन्छ तीन वटा कृच्छ्र व्रत गरी पूर्ण शुद्ध हुन्छ ।

**स्नानं दानं तपो होमः स्वाध्यायः पितृतर्पणम् ।**
**पञ्चयज्ञा वृथा तस्य नीलीवस्त्रस्य धारणात् ॥३॥**

उसको स्नान, दान, जप, होम, वेदादि अध्ययन, पितृतर्पण र पञ्चमहायज्ञ सबै कुरा नीलो कपडा लगाउनाले निष्फल हुन जान्छ ।

**नीलीरक्तं यदा वस्त्रं ब्राह्मणोऽङ्गेषु धारयेत् ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥४॥**

नीरले रङ्गाइएको कपडा जब ब्राह्मणले शरीरमा लगाउँछ तब ऊ दिनरात उपवास बसी पञ्चगव्य खाएर शुद्ध हुन्छ ।

**रोमकूपैर्यदागच्छेद्रसो नील्यास्तु कर्हिचित् ।**
**पतितस्तु भवेद्विप्रस्त्रिभिः कृच्छ्रैर्विशुध्यति ॥५॥**

केहि गरी रौंका जराका प्वालबाट नीरको रस शरीरभित्र छिरेमा ब्राह्मण पतित हुन्छ र तीन कृच्छ्र गरेर मात्र पूर्ण शुद्ध हुन्छ ।

**नीलीदारु यदा भिन्द्याद् ब्राह्मणस्य शरीरकम् ।**
**शोणितं दृश्यते तत्र द्विजश्चान्द्रायणं चरेत् ॥६॥**

नीरको लौरो आदिले ब्राह्मणको शरीरमा लागि रगत पनि निक्लेमा द्विजले चान्द्रायण व्रत गर्नू ।

**नीलीमध्ये यदा गच्छेत् प्रमादात् ब्राह्मणः क्वचित् ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥७॥**

यदि नीरको खेती भित्र जानाजान ब्राह्मण पस्दछ भने दिनरात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**नीलीरक्तेन वस्त्रेण यदन्नमुपनीयते ।**
**अभोज्यं तद् द्विजातीनां भुक्त्वा चान्द्रायणं चरेत् ॥८॥**

नीर हालिएको कपडाले जुन अन्न दिइन्छ त्यो द्विजबाट खान योग्य हुँदैन, खाए चान्द्रायण व्रत गर्नू ।

**भक्षयेद् यश्च नीलीं तु प्रमादाद् ब्राह्मणः क्वचित् ।**
**चान्द्रायणेन शुद्धिः स्यादापस्तम्बोऽब्रवीन्मुनिः ॥९॥**

जानाजान नीर खाने ब्राह्मणले चान्द्रायण व्रत गरेर शुद्धि पाउँछ, यो आपस्तम्ब मुनिको भनाइ हो ।

**यावत्यां वापिता नीली तावती चाशुचिर्मही ।**
**प्रमाणं द्वादशब्दानि अत ऊर्ध्वं शुचिर्भवेत् ॥१०॥**

जती भूभागमा नीरको खेती गरिएको छ त्यती जमिन बाह्र वर्षसम्म अपवित्र हुन्छ, त्यसपछि मात्र शुद्ध हुन्छ ।

॥ इत्यापस्तम्बीये धर्मशास्त्रे षष्ठोऽध्यायः ॥६॥
॥ आपस्तम्बीय धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
गरिएको भावानुवादको छैटौं अध्याय सकिएको छ ॥६॥



आदितः श्लोकानां समष्टयङ्काः-८५+१०=९५
शुरुदेखिका श्लोक सङ्ख्या : ९५



## ॥ अथ सप्तमोऽध्यायः ॥
## (सातौं अध्याय)

**स्नानं रजस्वलायास्तु चतुर्थेऽहनि शस्यते ।**
**वृत्ते रजसि गम्या स्त्री नानिवृत्ते कथञ्चन ॥१॥**

परसरेकी स्त्रीको स्नान चौथो दिनमा गर्नें भनी बताइएको छ । रज बन्द भएपछि मात्र स्त्री सम्भोगको योग्य हुन्छे नभइन्जेल केही गरे पनि हुन्न । (बार्नुपर्ने रज हो दिन होइन) ।

**रोगेण यद्रजः स्त्रीणामत्यर्थं हि प्रवर्तते ।**
**अशुद्धास्तु न तेनेह तासां वैकारिकं हि तत् ॥२॥**

रोगले गर्दा स्त्रीहरुको रगत जुन धेरै बहन्छ, त्यसले तिनीहरु अपवित्र हुँदैनन् । त्यो तिनकै विकारका कारणले हुन्छ ।

**साध्वाचारा न सा तावद्रजो यावत् प्रवर्तते ।**
**वृत्ते रजसि साध्वी स्याद् गृहकर्म्मणि चैन्द्रिये ॥३॥**

रगत गइरहेसम्म रजस्वला स्त्री उत्तम कार्य गर्न योग्य हुन्न । रगत रोकिएपछि उनी उत्तम कार्य गर्न र सम्भोग गर्न योग्य हुन्छिन् ।

**प्रथमेऽहनि चाण्डाली द्वितीये ब्रह्मघातिनी ।**
**तृतीये रजकी प्रोक्ता चतुर्थेऽहनि शुध्यति ॥४॥**

रजस्वला स्त्री पहिलो दिन चाण्डाल्नी, दोश्रो दिन ब्रह्मघातिनी र तेश्रो दिन धोबिनी समान हुन्छे, चौथो दिन शुद्ध हुन्छे ।

**अन्त्यजातिश्वपाकेन संस्पृष्टा वै रजस्वला ।**
**अहानि तान्यतिक्रम्य प्रायश्चित्तं प्रकल्पयेत् ॥५॥**

शूद्र वा श्वपाकद्वारा यदि रजस्वला आईमाई छोइए, तिनले तिनको रगत आउने दिन बिताएर मात्र प्रायश्चित गर्नू ।

**त्रिरात्रमुपवासः स्यात् पञ्चगव्यं विशोधनम् ।**
**निशां प्राप्य तु तां योनिं प्रजाकारञ्च कामयेत् ॥६॥**

यसमा तीन रातको उपवास र पञ्चगव्य शुद्ध पार्ने हुन्छ । अन्तिम रात पवित्र भई सन्तान उत्पन्न गर्ने पतिको कामना गर्नू ।

**रजस्वलान्त्यजैः स्पृष्टा शुना च श्वपचेन च ।**
**त्रिरात्रोपोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥७॥**

कुकुर, अन्त्यज र श्वपाकले छोइएकी रजस्वला तीन रात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छे ।

**प्रथमेऽहनि षड्रात्रं द्वितीये तु त्र्यहन्तथा ।**
**तृतीये चोपवासस्तु चतुर्थे वह्निदर्शनात् ॥८॥**

पहिलो दिन छोइए पाँच रात, दोश्रो दिन तीन दिन र तेश्रो दिन छोइए एक दिन उपवास बस्नाले तथा चौथो दिन छोइए अग्नि-दर्शनले शुद्ध हुन्छे ।

**विवाहे वितते यज्ञे संस्कारे च कृते तथा ।**
**रजस्वला भवेत् कन्या संस्कारस्तु कथं भवेत् ॥९॥**

विवाहको मण्डपमा अग्नि फैलिसकेको र केही संस्कार पनि पूरा भएको अवस्थामा कन्या रजस्वला भए बाँकी संस्कार कसरी हुन्छ ? ।

**स्नापयित्वा तदा कन्यामन्यैर्वस्त्रैरलङ्कृताम् ।**
**पुनः मेध्याहुतिं हुत्वा शेषं कर्म समाचरेत् ॥१०॥**

त्यसबेला कन्यालाई नुहाउन लगाई अर्कै कपडा र गहना फेरी पुनः होम हाली बाँकी कर्म सम्पन्न गर्नू ।

**रजस्वला तु संस्पृष्टा प्लवकुक्कुटवायसै ।**
**सा त्रिरात्रोपवासेन पञ्चगव्येन शुध्यति ॥११॥**

बाँदर, कुखुरा र कौवाले छोइएकी जो रजस्वला छे, तिनी तीन रात उपवास र पञ्चगव्यले शुद्ध हुन्छिन् ।

**रजस्वला तु या नारी अन्योऽन्यं स्पृशते यदि ।**
**तावत् तिष्ठेन्निराहारा स्नात्वा कालेन शुध्यति ॥१२॥**

रजस्वलाले रजस्वलालाई छोए चौथो दिनसम्म निराहार बसी समय आएपछि नुहाएर शुद्ध हुन्छे ।

**उच्छिष्टेन तु संस्पृष्टा कदाचित् स्त्री रजस्वला ।**
**कृच्छ्रेण शुध्यते विप्रा शूद्रा दानेन शुध्यति ॥१३॥**

रजस्वलालाई कुनै बेला जुठो मुखका व्यक्तिले छोइदिए ब्राह्मणी कृच्छ्रव्रत गरेर तथा शुद्रा दान गरेर शुद्ध हुन्छे ।

**एकशाखासमारुढा चाण्डाला वा रजस्वला ।**
**ब्राह्मणेन समं तत्र सवासाः स्नानमाचरेत् ॥१४॥**

चाण्डाल, रजस्वला र ब्राह्मण एउटै रुखको हाँगामा चढेका छन् भने त्यस अवस्थामा प्रत्येकले सवस्त्र स्नान गर्नु ।

**रजस्वलायाः संस्पर्शं कथञ्चिज्जायते शुना ।**
**रजोदिनानां यच्छेषं तदुपोष्य विशुध्यति ॥१५॥**

रजस्वलाको केही गरी कुकुरका साथ स्पर्श हुन गए, रज आउन बाँकी दिन उपवास बसी शुद्ध हुन्छे ।

**अशक्ता चोपवासेन स्नानं पश्चात् समाचरेत् ।**
**तत्राप्यशक्ता चैकेन पञ्चगव्येन शुध्यति ॥१६॥**

सो उपवास बस्न अशक्त भए, पछि एक दिन उपवास गरी नुहाउनू । नुहाउन पनि नसक्ने भए एक उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छे ।

**उच्छिष्टस्तु यदा विप्रः स्पृशेन्मद्यं रजस्वलाम् ।**
**मद्यं स्पृष्ट्वा चरेत् कृच्छ्रं तदर्द्धन्तु रजस्वलाम् ॥१७॥**

जुठो मुखको ब्राह्मण जब मदिरा र रजस्वलालाई छुन्छ तब मदिरा छोए कृच्छ्र र रजस्वला छोए अर्द्धकृच्छ्र व्रत गर्नू ।

**उदक्यां सूतिकां विप्र उच्छिष्टः स्पृशते यदि ।**
**कृच्छ्रार्द्धन्तु चरेद्विप्रः प्रायश्चित्तं विशोधनम् ॥१८॥**

जुठो मुखको ब्राह्मण यस्ती रजस्वलालाई छुन्छ जसले बच्चा जन्माएकी छ भने त ब्राह्मणले अर्द्धकृच्छ्र व्रत गर्नू, किनकि प्रायश्चत नै शुद्धीको उपाय हुन्छ ।

**चाण्डालः श्वपचो वाऽपि आत्रेयीं स्पृशते यदि ।**
**शेषाहान् फालकृष्टेन पञ्चगव्येन शुध्यति ॥१९॥**

चाण्डाल र श्वपच यदि रजस्वलालाई छुन्छन् भने उनी बाँकी दिन फालीले चलाएको पञ्चगव्य खानाले शुद्ध हुन्छिन् ।

**उदक्या ब्राह्मणी शूद्रामुदक्यां स्पृशते यदि ।**
**अहोरात्रोषिता भूत्वा पञ्चगव्येन शुध्यति ॥२०॥**

रजस्वला ब्राह्मणी रजस्वला शूद्रालाई छुन्छे भने त एक दिनरातको उपवास र पञ्चगव्यले शुद्ध हुन्छे ।

**एवञ्च क्षत्रियां वैश्यां ब्राह्मणी चेद्रजस्वला ।**
**सचैलप्लवनं कृत्वा दिनस्यान्ते घृतं पिबेत् ॥२१॥**

रजस्वला ब्राह्मणी रजस्वला क्षत्रिणी वा वैश्यालाई छुन्छे भने त सवस्त्र पानीमा डुबुल्की लगाई दिनको अन्तमा घिउ पिउनू ।

**सवर्णेषु तु नारीणां सद्यः स्नानं विधीयते ।**
**एवमेव विशुद्धिः स्यादापस्तम्बोऽब्रवीन्मुनिः ॥२२॥**

समान जातका रजस्वलाको छुवाछुतमा रजस्वलालाई तुरुन्त नुहाउने विधान छ । आपस्तम्ब मुनिका अनुसार यसैले शुद्ध हुन्छ ।

॥ इत्यापस्तम्बीये धर्मशास्त्रे सप्तमोऽध्यायः ॥७॥
॥ आपस्तम्बीय धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
गरिएको भावानुवादको सातौं अध्याय सकिएको छ ॥७॥



आदितः श्लोकानां समष्टयङ्काः-९५+२२=११७
शुरुदेखिका श्लोक सङ्ख्या : ११७



## ॥ अथाष्टमोऽध्यायः ॥
## (आठौं अध्याय)

**भस्मना शुध्यते कांस्यं सुरया यन्न लिप्यते ।**
**सुराविण्मूत्रसंस्पृष्टं शुध्यते तापलेखनैः ॥१॥**

काँसको भाँडो जसमा मदिरा परेको हुँदैन त्यो खरानीले शुद्ध हुन्छ । तर मदिरा तथा मलमूत्र परेको भए तताएर कोतर्नाले शुद्ध हुन्छ ।

**गवाघ्रातानि कांस्यनि शूद्रोच्छिष्टानि यानि तु ।**
**दशभस्मभिः शुध्यन्ति श्वकाकोपहतानि च ॥२॥**

गाईले सुँघेका, शूद्रको जुठो पारिएका तथा कागकुकुरले अपवित्र काँसका भाँडा खरानीले दश पटक माझ्नाले शुद्ध हुन्छन् ।

**शौचं सुवर्णनारीणां वायुसूर्येन्दुरश्मिभिः ॥३॥**

सुन एवं नारीको शुद्धि हावा तथा चन्द्र-सूर्यको किरणले हुन्छ ।

**रेतःस्पृष्टं शवस्पृष्टमाविकञ्च न दुष्यति ।**
**अद्भिर्मृदा च तन्मात्रं प्रक्षाल्य च विशुध्यति ॥४॥**

स्त्री-रज वा वीर्य वा शवले छोएर ऊनी कपडा अशुद्ध हुँदैन, जती भ्रष्ट वा अशुद्ध भएको छ त्यति मात्र पानी र माटोले धोए शुद्ध हुन्छ ।

**शुष्कमन्नमविप्रस्य पञ्चरात्रेण जीर्य्यति ।**
**अन्नं व्यञ्जनसंयुक्तमर्द्धमासेन जीर्य्यति ॥५॥**

शूद्रको सुक्खा अन्न पाँच रातमा र व्यञ्जन सहितको अन्न आधा महिनामा पच्दछ ।

**पयस्तु दधि मासेन षण्मासेन घृतं तथा ।**
**संवत्सरेण तैलन्तु कोष्ठे जीर्य्यति वा न वा ॥६॥**

दूधदही एक महिनामा तथा घिउ छ महिनामा पच्दछ । पेटमा परेको तेल त वर्षदिनमा पनि पच्छ कि पच्दैन भन्न सकिँदैन ।

**भुञ्जते ये तु शूद्रान्नं मासमेकं निरन्तरम् ।**
**इह जन्मनि शूद्रत्वं जायन्ते ते मृता शुनि ॥७॥**

शूद्रको अन्न एक महिनासम्म निरन्तर जो खान्छन्, ती यस लोकमा शूद्र हुन्छन् र मरेर कुकुर भई जन्मन्छन् ।

**शूद्रान्नं शूद्रसम्पर्कः शूद्रेणैव सहासनम् ।**
**शूद्रात्ज्ञानागमः कश्चिज्ज्वलन्तमपि पातयेत् ॥८॥**

शूद्रको अन्न, सम्पर्क, एउटै आसनको बसाइ तथा शूद्रसँग कुनै ज्ञान हासिल गर्ने कामले तेजशाली मानिसको पनि पतन गर्न सक्दछ ।

**आहिताग्निस्तु यो विप्रः शूद्रान्नान्न निवर्तते ।**
**तथा तस्य प्रणश्यन्ति आत्मा ब्रह्म त्रयोऽग्नयः ॥९॥**

जो ब्राह्मण अग्निको आधान गरेर शूद्रको अन्नबाट पर हट्‌दैन उसका आत्मा, वेद र तीनै प्रकारका अग्नि नष्ट हुन्छन् ।

**शूद्रान्नेन तु भुक्तेन मैथुनं योऽधिगच्छति ।**
**यस्यान्नं तस्य ते पुत्रा ह्यन्नाच्छुक्रस्य सम्भवः ॥१०॥**

शूद्रको अन्न खाई सन्तान पाउन जो सम्भोग गर्दछ, जसको अन्न हो त्यो हुने पुत्र त्यसकै हुन्छ किनकि वीर्य अन्नबाटै उत्पत्ति हुन्छ ।

**शूद्रान्नेनोदरस्थेन यः कश्चिन्म्रियते द्विजः ।**
**संभवेच्छूकरो ग्राम्यस्तस्य वा जायते कुले ॥११॥**

शूद्रको अन्न पेटमा राखेर मर्ने द्विज ग्रामिण सुँगुर भएर जन्मन्छ अथवा त्यही शूद्रको कुलमा जन्मन्छ ।

**ब्राह्मणस्य सदा भुङ्क्ते क्षत्रियस्य तु पर्वणि ।**
**वैश्यस्य यज्ञदीक्षायां शूद्रस्य न कदाचन ॥१२॥**

ब्राह्मणको अन्न सदा भक्षणीय हुन्छ । क्षत्रियको पर्वहरुमा तथा वैश्यको यज्ञको दीक्षामा भक्षणीय हुन्छ तर शूद्रको कहिल्यै हुँदैन ।

**अमृतं ब्राह्मणस्यान्नं क्षत्रियस्य पयः स्मृतम् ।**
**वैश्यस्याप्यन्नमेवान्नं शूद्रस्य रुधिरं स्मृतम् ॥१३॥**

ब्राह्मणको अन्न अमृत, क्षत्रियको अन्न दूध, वैश्यको अन्न अन्न र शूद्रको अन्नलाई रगत समान मानिएको छ ।

**वैश्वेदेवेन होमेन देवताभ्यर्चनैर्जपः ।**
**अमृतं तेन विप्रान्नमृग्यजुः सामसंस्कृतम् ॥१४॥**

वैश्वदेव यज्ञले, होमले, देवपूजाले, जपले तथा ऋग्-यजु-सामका मन्त्रले शुद्ध गरिएको हुनाले ब्राह्मणको अन्न अमृत हुन्छ ।

**व्यवहारानुरुपेण धर्मेण च्छलवर्जितम् ।**
**क्षत्रियस्य पयस्तेन भूतानां यच्च पालनम् ॥१५॥**

व्यवहार अनुरुप धर्मबाट छल नगरी कमाइएको र प्रजाको पालनार्थ हुने हुनाले क्षत्रियको अन्न दूध हो ।

**स्वकर्म्मणा च वृषभैरनुसृत्याद्यशक्तितः ।**
**खलयज्ञातिथित्वेन वैश्यान्नन्तेन संस्कृतम् ॥१६॥**

स्वयं काम गरेर तथा शक्ति अनुसार साँढेबाट काम लिइने आदि गरी कमाइएको एवं खलो, यज्ञ तथा आतिथ्यले पवित्र गरिएको हुनाले वैश्यको अन्न शुद्ध हुन्छ ।

**अज्ञानतिमिरान्धस्य मद्यपानरतस्य च ।**
**रुधिरं तेन शूद्रान्नं विधिमन्त्रविवर्जितम् ॥१७॥**

अज्ञान र अन्धकारका कारणले अन्ध हुने र सुरापानमा लागिरहने शूद्रको अन्न विधान र मन्त्रले हीन हुने हुनाले रगत हुन्छ ।

**आममांसं मधु घृतं धानाः क्षीरं तथैव च ।**
**गुडतक्ररसा ग्राह्या निवृत्तेनापि शूद्रतः ॥१८॥**

काँचो मासु, मह, घिउ, धान, दूध, सक्खर, मोही र रस जस्ता वस्तु सन्यासीले पनि शूद्रसँग लिन हुन्छ ।

**शाकं मांसं मृणालानि तुम्बुरुः सक्तवस्तिलाः ।**
**रसाः फलानि पिण्याकं प्रतिग्राह्या हि सर्वतः ॥१९॥**

सागपात, मासु, कमलडाँठ, लौका, सातु, तिल, रस, फल र पिना-यी कुरा सबैसँग लिन हुन्छ ।

**आपत्काले तु विप्रेण भुक्तं शूद्रगृहे यदि ।**
**मनस्तापेन शुध्येत द्रुपदां वा शतं जपेत् ॥२०॥**

आपदमा शूद्रको घरमा खाना खाने बाहुन मनले पश्चाताप गर्नाले वा शुद्धिका लागि सय पटक द्रुपद मन्त्र जप्नाले शुद्ध हुन्छ ।

**द्रव्यपाणिश्च शुद्रेण स्पृष्टोच्छिष्टेन कर्हिचित् ।**
**तद् द्विजेन न भोक्तव्यमापस्तम्बोऽब्रवीन्मुनिः ॥२१॥**

हातमा खानेकुरा लिएको बाहुनलाई जुठोमुखको शुद्रले छोए त्यो खाना नखानु भनी आपस्तम्ब मुनिले भनेका छन् ।

॥ इत्यापस्तम्बीये धर्मशास्त्रे अष्टमो ऽध्यायः ॥८॥
॥ आपस्तम्बीय धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
गरिएको भावानुवादको आठौं अध्याय सकिएको छ ॥८॥



आदितः श्लोकानां समष्ट्यङ्काः-११७+२१=१३८
शुरुदेखिका श्लोक सङ्ख्या : १३८



## ॥ अथ नवमोऽध्यायः ॥
## (नवौं अध्याय)

**भुञ्जानस्य तु विप्रस्य कदाचित् स्रवते गुदम् ।**
**उच्छिष्टस्याशुचेस्तस्य प्रायश्चित्तं कथं भवेत् ॥१॥**

ब्राह्मणको भोजन गर्दाखेरी दिसा चुहिए त्यो जुठो र अपवित्रताको प्रायश्चित के गरी हुन्छ ? ।

**पूर्वं शौचन्तु निर्वर्त्य ततः पश्चादुपस्पृशेत् ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥२॥**

पहिले मलमूत्र त्यागगर्ने काम सक्नू, त्यसपछि आचमन गर्नू । फेरी एक दिनरात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**अशित्वा सर्वमेवान्नमकृत्वा शौचमात्मनः ।**
**मोहाद्भुक्त्वा त्रिरात्रन्तु यवान् पीत्वा विशुध्यति ॥३॥**

अज्ञानले वा शौच नगरी पूरै खाना खाए तीन रातसम्म जौ पिई पूर्णरुपले शुद्ध हुन्छ ।

**प्रसृतं यवशस्येन पलमेकन्तु सर्पिषा ।**
**पलानि पञ्च गोमूत्रं नातिरिक्तवदाशयेत् ॥४॥**

एक पसर जौको अन्नका साथमा एक पल (चौसठ्ठी मासा वा तीन सय बीस लाल) घिउ र पाँच पल गहुँत मिलाएर खानू । यसभन्दा बढी नखानू ।

**अलेह्यानामपेयानामभक्ष्याणाञ्च भक्षणे ।**
**रेतोमूत्रपुरीषाणां प्रायश्चित्तं कथं भवेत् ॥५॥**

चाट्न अयोग्य, पिउन अयोग्य र खान अयोग्य कुरा खाएमा वा मलमूत्र खाएमा के गरी प्रायश्चित हुन्छ ? ।

**पद्मोदुम्बरबिल्वाश्च कुशाश्वत्थपलाशकाः ।**
**एथेषामुदकं पीत्वा षड्रात्रेण विशुध्यति ॥६॥**

कमल, डुम्री, बेल, कुश, पीपल र पलाश मिसाई त्यसको पानी खाई छ रातमा पूर्ण शुद्ध हुन्छ ।

**ये प्रत्यवसिता विप्राः प्रव्रज्याग्निजलादिषु ।**
**अनाशकनिवृत्ताश्च गृहस्थत्वं चिकीर्षतः ॥७॥**
**चरेयुस्त्रीणि कृच्छ्राणि त्रीणि चान्द्रायणानि वा ।**
**जातकर्मादिभिः सर्वैः पुनः संस्कारभागिनः ॥**
**तेषां सान्तपनं कृच्छ्रं चान्द्रायणमथापि वा ॥८॥**

जो ब्राह्मणले सन्यास, अग्नि र जल आदिका क्रिया सकेका वा परित्याग गरि दिएका छन् वा जसले उपवास सकेका छन् तिनले गृहस्थधर्मको चाहना गर्दछन् भने प्रायश्चितका लागि तीन कृच्छ्र र वा तीन चान्द्रायण व्रत गर्नू । जो जातकर्म देखिका सबै संस्कार पुनः गर्नु पर्ने हुन्छन् तिनले सान्तपन कृच्छ्र वा चान्द्रायण व्रत गर्नुपर्ने विधान छ ।

**यद्वेष्टितं काकबलाकचिल्लैरमेध्यलिप्तश्च भवेच्छरीरम् ।**
**श्रोत्रे मुखे च प्रविशेच्च सम्यक् स्नानेन लेपोपहतस्य शुद्धिः ॥९॥**

काग-बकुल्ला-चीलले छोएको, अपवित्र टाँसिएको वा कान-मुखमा मल आदि पसेको शरीर राम्ररी नुहाउनाले शुद्धि हुन्छ ।

**ऊद्र्ध्वं नाभेः करौ मुक्त्वा यदङ्गमुपहन्यते ।**
**ऊद्र्ध्वं स्नानमधः शौचमात्रेणैव विशुध्यति ॥१०॥**

हात बाहेक नाइटो माथिका अरु अङ्ग अपवित्र भए नुहाएर तथा नाइटो मुनी अपवित्र भए शौचले नै शुद्धि हुन्छ ।

**उपानहावमेध्यं वा यस्य संस्पृशते मखम् ।**
**मृत्तिकाशोधनं स्नानं पञ्चगव्यं विशोधनम् ॥११॥**

जुत्ता वा मलले जसको मुख छोइएको छ, माटोले सफा गर्नु, नुहाउनू र पञ्चगव्य खानू उसको शुद्धि हुन्छ ।

**दशाहाच्छुध्यते विप्रो जन्महानौ स्वयोनिषु ।**
**षड्भिस्त्रिभिरथैकेन क्षत्रविट्शूद्रयोनिषु ॥१२॥**

ब्राह्मण स्वजातिको जन्ममरणमा दश दिनमा शुद्ध हुन्छ । क्षत्रिय छ दिनमा, वैश्य तीन दिनमा र शूद्र तीन दिनमा शुद्ध हुन्छ ।

**उपनीतं यदा त्वन्नं भोक्तारं समुपस्थितम् ।**
**प्रमीतवत् समुत्सृष्टं न दद्यान्नैव होमयेत् ॥१३॥**

खान आएकालाई खान दिएको कुरा उसले यदि त्याग्यो भने उ मरेको पशुसमान हुन्छ । त्यो खाना कसैलाई खान पनि नदिनू र त्यसले होम पनि नगर्नू ।

**अन्ने भोजनसम्पन्ने मक्षिकाकेशदूषिते ।**
**अनन्तरं स्पृशेदापस्तच्चान्नं भस्मना स्पृशेत् ॥१४॥**

पाकेको खानामा यदि झिँगा वा केश परेर दूषित भए तुरुन्त आचमन गर्नू र खाना खरानीले छुवाउनू ।

**शुष्कमांसमयं चान्नं शूद्रान्नं वाप्यकामतः ।**
**भुक्त्वा कृच्छ्रं चरेद्विप्रो ज्ञानात् कृच्छ्रत्रयं चरेत् ॥१५॥**

सुकेका मासुले बनेका वा शूद्रका घरको खाना थाहा नपाई खाए एक र थाहा पाईपाई खाए तीन कृच्छ्र व्रत गर्नू ।

**अभुक्ते मुञ्चते यश्च भुञ्जन् यश्चापि मुच्यते ।**
**भोक्ता च मोचकश्चैव पङ्क्त्या गच्छति दुष्कृतम् ॥१६॥**

खाना खाँदाखाँदै बिचमै खान छोडे वा खान छोडाइए दुबै खान छोड्ने र छोडाउने पङ्क्ति सहितै पापमा प्राप्त हुन्छन् ।

**यश्च भुङ्क्ते तु भुक्तं वा दुष्टं वाऽपि विशेषतः ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥१७॥**

खाइएको अन्न खानेले र दोष भएको अन्न खानेले एक दिनरात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**उदके चोदकस्थस्तु स्थलस्थश्च स्थले शुचिः ।**
**पादौ स्थाप्योभयत्रैव आचम्योभयतः शुचिः ॥१८॥**

जलमा हुँदा जलमा र स्थलमा हुँदा स्थलमा शुद्ध हुन्छ । दुबैमा गोडा टेकी आचमन गर्नाले शुद्ध हुन्छ ।

**उत्तीर्य्याचम्य उदकादवतीर्य्य उपस्पृशेत् ।**
**एवन्तु श्रेयसा युक्तो वरुणेनाभिपूज्यते ॥१९॥**

जलमा हुँदा बाहिर निक्ली एवं स्थलमा हुँदा जलमा पसी आचमन गर्नू । यसरी कल्याणयुक्त पुरुष वरुणबाट पनि पूजिन्छ ।

**अग्न्यागारे गवां गोष्ठे ब्राह्मणानाञ्च सन्निधौ ।**
**स्वाध्याये भोजने चैव पादुकानां विसर्जनम् ॥२०॥**

यज्ञशालामा, गाई-गोठमा, ब्राह्मणका समिपमा तथा वेदपाठ गर्दा र भोजन गर्दा खराउ फुकाल्नु पर्दछ ।

**जन्मप्रभृतिसंस्कारे श्मशानान्ते च भोजनम् ।**
**असपिण्डैर्न कर्तव्यं चूडाकार्ये विशेषतः ॥२१॥**

जातकर्म आदि र अन्तिम संस्कारका कर्ममा सपिण्डी बाहेकका साथमा भोजन नगर्नू अझ चूडाकर्ममा त विशेषरुपले नगर्नू ।

**याजकान्नं नवश्राद्धं संग्रहे चैव भोजनम् ।**
**स्त्रीणां प्रथमगर्भे च भुक्त्वा चान्द्रायणं चरेत् ॥२२॥**

ऋत्विकको अन्न, एघारौंको अन्न, भण्डारमा बसेर खाए तथा पहिलो गर्भाधान संस्कारमा खाए चान्द्रायण व्रत गर्नू ।

**ब्रह्मौदनेऽवसाने च सीमन्तोन्नयने तथा ।**
**अन्नश्राद्धे मृतश्राद्धे भुक्त्वा चान्द्रायणं चरेत् ॥२३॥**

उपनयनमा, मृत्युमा, सीमन्तोनयनमा, अन्न-श्राद्धमा र मृत-श्राद्धमा गएर खानेले चान्द्रायण व्रत गर्नू ।

**अप्रजा या तु नारी स्यान्नाश्नीयादेव तद्गृहे ।**
**अथ भुञ्जीत मोहाद् यः पूयं स नरकं व्रजेत् ॥२४॥**

सन्तान नभएका नारीको घरमा नखानू, मोहले खाए त्यो व्यक्ति पूय नामको नरकमा पर्दछ ।

**अल्पेनापि हि शुल्केन पिता कन्यां ददाति यः ।**
**रौरवे बहुवर्षाणि पुरीषं मूत्रमश्नुते ॥२५॥**

जो पिता अलिकति मात्रै पैसा लिएर पनि आफ्नी कन्यालाई दिन्छ उ रौरव नरकमा धेरै वर्षसम्म मलमूत्र खान्छ ।

**स्त्रीधनानि च ये मोहादुपजीवन्ति बान्धवाः ।**
**स्वर्णं यानानि वस्त्राणि ते पापा यान्त्यधोगतिम् ॥२६॥**

जो आफन्तहरु अज्ञानवश स्त्रीको सम्पत्तिले जीवन चलाउँछन् वा तिनका सुन, सवारी वा वस्त्र प्रयोग गर्दछन् त्यस्ता पापीहरुको अधोगति हुन्छ ।

**राजान्नं तेज आदत्ते शूद्रान्नं ब्रह्मवर्च्चसम् ।**
**असंस्कृतन्तु यो भुङ्क्ते स भुङ्क्ते पृथिवीमलम् ॥२७॥**

राजाको अन्नले तेज र शूद्रको अन्नले ब्रह्मतेज लैजान्छ । जो असंस्कृत भोजन खान्छ त्यो पृथ्वीको मल खान्छ ।

**मृतके सूतके चैव गृहीते शशिभास्करे ।**
**हस्तिच्छायान्तु यो भुङ्क्ते पापः स पुरुषो भवेत् ॥२८॥**

जुठोसूतकमा, सूर्यचन्द्र ग्रहणमा र गजछाया [१] मा जसले खान्छ त्यो मानिस पापी हुन्छ ।
(१. कृष्णपक्षको त्रयोदशी तिथि, जब सूर्य हस्तामा र चन्द्रमा मघामा हुन्छ ।)

**पुनर्भूः पुनरेता च रेतोधा कामचारिणी ।**

**आसां प्रथमगर्भेषु भुक्त्वा चान्द्रायणं चरेत्॥२९॥**

पुनर्विवाह गरिएकी एकल महिला, एउटाको वीर्य धारण गरी फेरी अर्कोको वीर्य धारण गर्ने महिला, जो पायो त्यसैको वीर्य बोक्ने महिला र मनलागी आचरण गर्ने महिलाले पहिलो गर्भधारण संस्कारमा भोजन गरी चान्द्रायण व्रत गर्नू ।

**मातृघ्नश्च पितृघ्नश्च ब्रह्मघ्नो गुरुतल्पगः ।**
**विशेषाद्भुक्तमेतेषां भुक्त्वा चान्द्रायणं चरेत्॥३०॥**

माता, पिता र ब्राह्मणको हत्यारा एवं गुरुपत्नी गमन गर्नेको अन्न विशेष गरी जसले खान्छ, उसले खाएर चान्द्रायण व्रत गर्नू ।

**रजकव्याधशैलूषवेणुचर्मोपजीविनाम् ।**
**भुक्त्वैषां ब्राह्मणाश्चान्नं शुद्धिश्चान्द्रायणेन तु॥३१॥**

धोबी, ब्याधा, नट, बाँसकर्मी र छालाको काम गर्नेको अन्न खाने ब्राह्मण चान्द्रायण व्रतले शुद्ध हुन्छ ।

**उच्छिष्टोच्छिष्टसंस्पृष्टः कदाचिदुपजायते ।**
**सवर्णेन तदोत्थाय उपस्पृश्य शुचिर्भवेत्॥३२॥**

समान जातको जुठो मुख भएकालाई छोएर अपवित्र हुने मानिस उठेर आचमन गर्नाले शुद्ध हुन्छ ।

**उच्छिष्टोच्छिष्टसंस्पृष्टः शुना शूद्रेण च द्विजः ।**
**उपोष्य रजनीमेकां पञ्चगव्येन शुध्यति॥३३॥**

जुठो मुख हुनेले छोई जुठो (अपवित्र) भएका तथा कुकुर र शूद्रले छोइएको द्विज एक रात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**ब्राह्मणस्य सा कालं शूद्रे प्रेषणकारिणः ।**
**भूमावन्नं प्रदातव्यं यथैव श्वा तथैव सः॥३४॥**

शूद्रको जसरी दास कर्म गर्ने वा हुने ब्राह्मणलाई सधैँ भुइँमा खान दिनू किन कि जस्तो कुकुर हो, त्यो ब्राह्मण त्यस्तै हो ।

**अनूदकेष्वरण्येषु चौरव्याघ्राकुले पथि ।**
**कृत्वा मूत्रं पुरीषञ्च द्रव्यहस्तः कथं शुचिः॥३५॥**

पानी नपाइने वनमा वा चोर, बाघ आदिको डर रहने बाटोमा केही (भोजन आदि) कुरा हातमा लिएको बेलामा मलमूत्र त्याग गरी कसरी पवित्र हुन्छ ? ।

**भूमावन्नं प्रतिष्ठाप्य कृत्वा शौचं यथार्थतः ।**
**उत्सङ्गे गृह्य पक्वान्नमुपस्पृश्य ततः शुचिः ॥३६॥**

अन्नलाई भुईंमा राखेर राम्ररी शौच गर्नू । फेरी त्यो पाकेको अन्न काखमा लिएर त्यसपछि आचमन गर्नाले शुद्ध हुन्छ ।

**मूत्रोच्चारं द्विजः कृत्वा अकृत्वा शौचमात्मनः ।**
**मोहाद्भुक्त्वा त्रिरात्रन्तु गव्यं पीत्वा विशुध्यति ॥३७॥**

ब्राह्मणले मलमूत्र त्याग गरेर शुद्ध नभई मोहवश भोजन गरे, उ तीन रातसम्म पञ्चगव्य पिउनाले शुद्ध हुन्छ ।

**उदक्यां यदि गच्छेत्तु ब्राह्मणो मदमोहितः ।**
**चान्द्रायणेन शुध्येत ब्राह्मणानां च भोजनैः ॥३८॥**

ब्राह्मण कामवश रजस्वला भएकी स्त्रीलाई सम्भोग गर्दछ भने चान्द्रायण व्रत बसी ब्राह्मणलाई भोजन गराएर शुद्ध हुन्छ ।

**भुक्तोच्छिष्टस्त्वनाचान्तश्चाण्डालैः श्वपचेन वा ।**
**प्रमादात् यदि संस्पृष्टो ब्राह्मणो ज्ञानदुर्बलः ॥३९॥**

कमजोर ज्ञान भएको ब्राह्मण भोजन गरी जुठो (अपवित्र) मुख भएको र आचमन नगरेको अवस्थामा जानाजान चाण्डाल वा श्वपचद्वारा छुइन्छ भने ...।

**स्नात्वा त्रिषवणं नित्यं ब्रह्मचारी धराशयः ।**
**स त्रिरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥४०॥**

...नुहाएर त्रिषवण गर्नू, ब्रह्मचर्यको पालना गर्नू, भुइँमा सुत्नू । यसरी तीन रात उपवास बसी पञ्चगव्यले शुद्ध हुन्छ ।

**चाण्डालेन तु संस्पृष्टो यश्चापः पिबति द्विजः ।**
**अहोरात्रोषितो भूत्वा त्रिषवणेन शुध्यति ॥४१॥**

चाण्डालले छोइएको अवस्थामा जुन द्विजले पानी पिउँदछ उ रातदिन उपवास बसी त्रिषवण मन्त्र जपेपछि शुद्ध हुन्छ ।

सायं प्रातस्त्वहोरात्रं पादं कृच्छ्रस्य तं विदुः ।
सायं प्रातस्तथैवैकं दिनद्वयमयाचितम् ॥४२॥
दिनद्वयञ्च नाश्नीयात् कृच्छ्रार्द्धं तद्विधीयते ।
प्रायश्चित्तं लघुष्वेतत्पापेषु तु यथाऽर्हतः ॥४३॥

बिहानबेलुकी लिइने भोजनलाई पादकृच्छ्र भनिन्छ । एक दिन बिहानबेलुकी, दुई दिन सम्म नमागी जे पाइन्छ त्यो खाए अनि फेरी दुई दिन केही पनि नखाए त्यसलाई अर्द्धकृच्छ्र भनिन्छ । सानातिना पापमा यही प्रायश्चित यथायोग्य बताइएको छ ।

कृष्णाजिनतिलग्राही हस्त्यश्वानाञ्च विक्रयी ।
प्रेतनिर्यातकश्चैव न भूयः पुरुषो भवेत् ॥४४॥

कालो हरिणको छाला र तिल दान गर्ने, हात्ती र घोडा बेच्ने र लाश बोकेर मलाम जानेले अर्कोजन्ममा पुरुष हुनु पर्दैन ।

॥ इत्यापस्तम्बीये धर्मशास्त्रे नवमोऽध्यायः ॥९॥
॥ आपस्तम्बीय धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
गरिएको भावानुवादको नवौं अध्याय सकिएको छ ॥९॥



आदितः श्लोकानां समष्टयङ्काः-१३८+४४=१८२
शुरुदेखिका श्लोक सङ्ख्या : १८२



## ॥ अथ दशमोऽध्यायः ॥
## (दशौं अध्याय)

आचान्तोऽप्यशुचिस्तावद् यावन्नोद्ध्रियते जलम् ।
उद्धृतेऽप्यशुचिस्तावद् यावद् भूमिर्न लिप्यते ॥१॥
भूमावपि च लिप्तायां तावत् स्यादशुचिः पुमान् ।
आसनादुत्थितस्तमाद् यावन्नाऽऽक्रमते महीम् ॥२॥

आचमन गरेर पनि मानिस तबसम्म अपवित्र हुन्छ जबसम्म  पानी उठाई पर लगी फालिँदैन । पानी फालेर पनि जमिन नलिपेसम्म अपवित्रै हुन्छ । जमिन लिपेर पनि आसनबाट उठी जमिनमा नहिँडेसम्म उ अपवित्रै हुन्छ ।

न यमं यममित्याहुरात्मा वै यम उच्यते ।
आत्मा संयमितो येन तं यमः किं करिष्यति ॥३॥

यमलाई यम भनिंदैन, आफ्नु आत्मालाई नै यम भनिन्छ । जसले आत्मालाई वशमा पारेको छ, यमले त्यसको के गर्न सक्छ ? ।

**न तथाऽसिस्तथा तीक्ष्णः सर्पो वा दुरधिष्ठितः ।**
**यथा क्रोधो हि जन्तूनां शरीरस्थो विनाशकः ॥४॥**

तरबार के धारिलो होला, दुलोको सर्प के धारिलो होला जति धारिलो र विनाशकारी प्राणीको शरीरमा रहेको क्रोध हुन्छ ।

**क्षमा गुणो हि जन्तूनामिहामुत्र सुखप्रदः ।**
**एकः क्षमावतां दोषो द्वितीयो नोपपद्यते ॥**
**यदेनं क्षमया युक्तमशक्तं मन्यते जनः ॥५॥**

प्राणीहरूको क्षमा नामको गुण यो लोक र परलोकमा सुखदायक हुन्छ । क्षमाशीलमा एक मात्र दोष हुन्छ, अरु भेटिन्न, त्यो यो हो कि क्षमाशील मानिसलाई लोक कमजोर सम्झिने गर्दछ ।

**न शब्दशास्त्राभिरतस्य मोक्षो न चैव रम्यावसथप्रियस्य ।**
**न भोजनाच्छादनतत्परस्य एकान्तशीलस्य दृढव्रतस्य ॥६॥**
**मोक्षो भवेत् प्रीतिनिवर्त्तकस्य अध्यात्मयोगैकरतस्य सम्यक् ।**
**मोक्षो भवेन्नित्यमहिंसकस्य स्वाध्याययोगागतमानसस्य ॥७॥**

न शब्दशास्त्र (व्याकरण) मा डुबुल्की लगाउनेलाई, न रमणीय आवासमा लोभ गर्नेलाई न त भोजन, वस्त्र आदिमा तल्लिन हुनेलाई नै मोक्ष मिल्दछ । जो एकान्तप्रिय छ, जो दृढव्रती छ, जो सांसारिक मायाजालबाट विमुख छ र अध्यात्ममा डुबेको छ उसैले नै मोक्ष प्राप्त गर्दछ । जो कहिल्यै हिंसा गर्दैन, जो स्वाध्याय र योगमा लागि पर्दछ उसैलाई मोक्ष प्राप्त हुन्छ ।

**क्रोधयुक्तो यद् यजते यज्जुहोति यदर्चति ।**
**सर्वं हरति तत्तस्य आमकुम्भ इवोदकम् ॥८॥**

रिसाहा मानिस जे खान्छ, जे होम गर्दछ, जुन पूजा गर्दछ त्यो सबै रिसले त्यसरी नै सिद्ध्याउँछ जसरी चुहिने गाग्रोबाट पानी सिद्धिन्छ ।

**अपमानात्तपोवृद्धिः सम्मानात्तपसः क्षयः ।**
**अर्चितः पूजितो विप्रो दुग्धा गौरिव सीदति ॥९॥**

अपमानले तपको वृद्धि हुन्छ भने सम्मानले ह्रास हुन्छ । पूजाअर्जना गरिएको ब्राह्मण दूध दोहिसकेकी गाई समान उत्साहहीन हुन्छ ।

**आप्यायते यथा धेनुस्तृणैरमृतसम्भवैः ।**
**एवं जपैश्च होमैश्च पुनराप्यायते द्विजः ॥१०॥**

जसरी अमृतबाट उत्पन्न घाँस खाएर गाईमा पुनः दूध भरिन्छ त्यसरी नै ब्राह्मण जप र होम गरेर पुनः पूर्ण हुन्छ ।

**मातृवत् परदारांश्च परद्रव्याणि लोष्टवत् ।**
**आत्मवत् सर्वभूतानि यः पश्यति स पश्यति ॥११॥**

परस्त्रीलाई आमासरह, पराया धनलाई माटोको थुप्रो सरह र सबै प्राणीलाई आफू सरह देख्नेले सही देख्दछ ।

**रजकव्याधशैलूषवेणु चर्मोपजीविनाम् ।**
**यो भुङ्क्ते भक्तमेतेषां प्राजापत्यं विशोधनम् ॥१२॥**

धोबी, ब्याधा, नट, बाँसकर्मी र छालाको काम गर्नेको अन्न खाने ब्राह्मण प्राजापत्य व्रतले शुद्ध हुन्छ ।

**अगम्यागमनं कृत्वा अभक्ष्यस्य च भक्षणम् ।**
**शुद्धिं चान्द्रायणं कृत्वा अथर्वोक्तं तथैव च ॥१३॥**

गमन नहुनेलाई गमन गरेमा वा खान नहुने कुरा खाएमा चान्द्रायण व्रतले वा अथर्वा ऋषिले बताएको विधि गर्नाले शुद्धि हुन्छ ।

**अग्निहोत्रं त्यजेद् यस्तु सनरो वीरहा भवेत् ।**
**तस्य शुद्धिर्विधातव्या नान्या चान्द्रायणादृते ॥१४॥**

अग्निहोत्र त्याग गर्ने मानिस पुत्र हत्या गर्ने मानिस मानिन्छ र चान्द्रायण व्रत नगरी अरु कुनै कुराले पनि त्यसको शुद्धि हुँदैन ।

**विवाहोत्सवयज्ञेषु अन्तरा मृतसूतके ।**
**सद्यःशुद्धिं विजानीयात् पूर्वं सङ्कल्पितं चरेत् ॥१५॥**

विवाह, उत्सव र यज्ञका बिचमा जुठोसूतक परेमा तुरुन्त शुद्धि हुन्छ भनी जान्नू । पहिले नै सङ्कल्प गरिए अनुसार गर्नू ।

**देवद्रोण्यां विवाहेषु यज्ञेषु प्रततेषु च ।**
**कल्पितं सिद्धमन्नाद्यं नाशौचं मृतसूतके ॥१६॥**

देवकुण्डमा, विवाहमा र सङ्कल्प गरिएका यज्ञमा बनाइएका भोजन जुठोसूतकले अशुद्ध हुँदैन किनकि यसको आशौच लाग्दैन ।

॥ इत्यापस्तम्बीये धर्मशास्त्रे दशमोऽध्यायः ॥१०॥
॥ आपस्तम्बीय धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवादको दशौँ अध्याय सकिएको छ ॥१०॥



आदितः श्लोकानां समष्ट्यङ्काः-१८२+१६=१९८
शुरुदेखिका श्लोक सङ्ख्या : १९८



**॥ समाप्ता चेयमापस्तम्बस्मृतिः ॥**

॥ आपस्तम्बीय धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद सकिएको छ ॥



सबैको कल्याण होस्